# मध्यपुर-थिमि
# बिस्काजात्रा
## एक परिचय









राजेन्द्र श्रेष्ठ, बाबुकाजी साघें, मालेकुले थिमि

# पृष्ठभूमि



संस्कृति र परम्पराको जर्गेनामा तल्लीन् मध्यपुर थिमिवासीहरुले वर्षभरी मनाइने सानाठूला चाडपर्व मध्ये बिस्काजात्रा दशैंपछिको ठूलो चाड हो । देशभर छरिएर रहेका ऐतिहासिक नेवार बस्तीहरुमा स्थानीय देवीदेवताहरुको खत जात्रा मनाउने गरिएको पाइन्छ । त्यसरी मनाइने जात्राहरुमा काठमाडौं उपत्यकाका विभिन्न जात्राहरुमा मध्यपुर थिमि बिस्काजात्रा पनि एक हो । मध्यपुर थिमि बिस्काजात्रालाई थिमि बालकुमारी जात्रा, जिब्रो छेड्ने जात्रा, सिन्हः( सिन्दूर) जात्रा आदि उपनामबाट चिन्ने गरिएको पाइन्छ । यस जात्रामा थिमि क्षेत्रको २३, नगदेशको १, बोदेको ७ र तिगनीको १ गरी जम्मा ३२ देवीदेवताहरुको खत जात्रा गरिन्छ । त्यसैले यसलाई स्वीनिखा (बतीस खत) जात्रा, स्वीनिखा (बतीस खत) जात्रा भनेर पनि चिनिने गरिएको पाइन्छ ।

संस्कृति निर्माण एवम् जगेर्नामा निपुण नेवार संमुदायले समयसापेक्ष यसको विकास एवम् विस्तार गर्दै आफूलाई सम्वृद्ध बनाएका छन्। यसलाई पुष्टि गर्दै संस्कृति र संस्कार हराउँदै जान थालेको आजको समयमा मध्यपुर थिमिमा भने युव पुस्ताको सक्रियतामा नयाँ संस्कृतिको निर्माण भएको छ । स्थानीय समाजसेवीहरुको पहल र टोलबासीको सक्रिय सहभागितामा विगत २ वर्षदेखि मध्यपुर थिमि नगरपालिकाको लोहकिन्थलीमा खतजात्रा संचालनमा आएको छ । मध्यपुर थिमि बिस्काजात्रासँगसँगै संचालन हुँदै आएको उक्त जात्राले नगरको संस्कृतिलाई मात्र धनी बनाएको छैन परम्परागत संस्कृतिको जगेर्नामा चुकेका वा त्यसबाट बिमुख हुन थालेका व्यक्ति एवम् सरोकारवाला संस्था एवम् निकायहरुलाई समेत झकझक्याउनेछ भन्ने आशा गर्न सकिन्छ ।

### जात्राको ऐतिहासिक पक्ष

बिस्काजात्रा सम्बन्धी प्रचलित किम्बदन्ती अनुसार कुनै समयमा एक जना राजकुमारीको नाकबाट निस्केको सर्पले उनकै वरको हत्या गर्ने गरेको र पछि एक जना आँटिलो वरले उक्त सर्पलाई मार्न सफल भएको खुशियालीमा उही मृत सर्पको प्रतिकस्वरुप हलिंपता: (विश्वध्वज) फहऱ्याएर बिस्यात (अर्थात् नेपालभाषामा बिको अर्थ सर्प र स्यातको अर्थ माऱ्यो) भन्दै जात्रा मनाउन थालिएको र कालान्तरमा यही शव्द बिस्यात नै बिस्केटमा रुपान्तरण भएको भनिन्छ । तर प्राप्त विभिन्न अभिलेखमा उल्लेखित तथ्यहरुले उक्त किम्बदन्तीलाई भने प्रमाणित गर्दैन ।

बिस्काजात्रा कसले कहिलेबाट संचालनमा ल्यायो भन्ने सम्बन्धमा कुनै सामग्री हालसम्म फेला पार्न सकिएको छैन । प्राचीन ग्रन्थ गौतमी पुराणमा बिस्काजात्रा बारे यस्तो उल्लेख भेटिन्छ चैत्रे च विश्वयात्रां ध्वजस्योत्थानकं चरेत्, सर्वेदुःखा विनश्यन्ति सर्व शत्रु क्षयाय च, ध्वज भञ्जनकं क्रियते संक्रमे दिन ।। अर्थात् चैत्र र विश्वयात्रा (सूर्यमिन राशीबाट मेष राशीमा प्रवेश गर्ने बेला) मा ध्वजोत्थान गर्दा सम्पूर्ण दुःखकष्ट नाश भई सबै शत्रु क्षय हुन्छ र संक्रान्तिको दिन सो ध्वजा ढाल्नू । यसबाट दुःखकष्ट नाश हुने धार्मिक विश्वासले गरिँदै विश्वयात्राको अवसरमा गरिँदै आएको ध्वजोत्थान वा यःसिं ठड्याउने कार्यकालान्तरमा बिस्काजात्राको रुपमा विकास भएको देखिन्छ । अहिले पनि यःसि ठड्याएको दिनदेखि जात्रा प्रारम्भ हुने र यःसिं ढालिएपछि जात्रा सम्पन्न हुने प्रचलन रहिआएको छ । अर्को तर्फ य र ज अक्षरलाई कतिपय अवस्थामा एक अर्काको पर्यायको रुपमा समेत प्रयोग गर्ने गरिएको पाइन्छ जस्तै यजमान/जजमान, योगि/जोगि, युग/जुग आदि । यसबाट विश्वयात्रा शव्द विश्वजात्रामा रुपान्तर हुनु अनौठो देखिन्न भने विश्वयात्रामा फहराइने ध्वजा भएकोले त्यसलाई बिश्वध्वज भन्नु स्वभाविक छ । बिस्काजात्रामा फहऱ्याइने ध्वजालाई नेपालभाषामा हलिंपता: भनिन्छ जसको शाव्दिक अर्थ हलिं (विश्व) र पता: (ध्वजा) अर्थात् विश्वध्वज हो । यसले पनि हलिंपता: वा विश्वध्वज फहऱ्याउनु नै बिस्काजात्रा हो भन्ने कुरा पुष्टि हुन्छ । पछि संस्कृति निर्माणमा निपुण नेवार समुदायले उक्त ध्वजोत्थान गरी मनाइने जात्रालाई थप रमाइलो बनाउन कालान्तर खतजात्रा समेत गर्नथालिएको देखिन्छ । यसरी बिस्काजात्रा कसले कुन समयदेखि सुरुवात गरे भन्नेबारे पुष्टि गर्ने आधार नभेटिए पनि यःसिं ठड्याउने कार्य नै बिश्वजात्राको प्रारम्भिक प्रचलन हो भन्न सकिन्छ ।

भक्तपुर टौमढी टोलस्थित भैरब मन्दिरसँगै रहेको ढुङ्गे धाराको शिलापत्र बिस्काजात्रा सम्बन्धि हालसम्मको सबभन्दा पुरानो सामग्री हो । नेसं. ५६१ मा यक्ष मल्लद्वारा राख्न लगाइएको उक्त शिलापत्रमा ....इन्द्रजात्रा कोन्हु ।।..... बिश्वजात्रा कोन्हु ।। थ्वते दिन... उल्लेख छ । त्यस्तै गरी पशुपतिक्षेत्रमा रहेको एउटा ताम्रपत्रमा बैशाख संक्रान्तिलाई विश्व संक्रान्ति भनेको पाइन्छ । यसरी नै अधिकांश लिखतहरुमा बिस्काजात्रालाई बिश्वजात्रा लेखिएको पाइन्छ । यसबाट पनि बिस्काजात्राको आदिरूप बिश्वजात्रा नै भएको पुष्टि हुन्छ ।

थिमि थामाथलिको जग्गा किनबेच सम्बन्धि एउटा तमसूकमा चारकिल्ला खुलाउने क्रममा बिस्काजात्रा गुथिको उल्लेख आएको छ । नेसं. ६४१ को उक्त तमसुकमा ....... श्री थेमि ......थमाथलिखेल भुमेन परिचमत ......विसक जात्रा गुथिया भाड भूमेण दषिनत ।।.... उल्लेख गरिएको पाइन्छ । यसरी नेसं. ६४१ तिरै थिमिमा बिस्काजात्रा गुथि अस्तित्वमा रहेबाट मध्यपुर थिमि बिस्काजात्राको इतिहास अझै प्राचीन रहको देखिन्छ । तर अध्ययनको क्रममा बिस्काजात्रामा सहभागी हुने एवम् महत्वपूर्ण भूमिका राख्ने देवीदेवताहरुको स्थापना समेत नेसं. ७७० पछि मात्र प्रतिस्थापन गरिएको तथ्यले हालको खतजात्रा उक्त समयमा प्रचलनमा आइसकेको थियो वा थिएन भन्न गाऱ्हो छ । यसले खतजात्रा सम्बन्धी अध्ययनलाई थप चाखलाग्दो बनाइदिएको छ ।



## जात्राको सांस्कृतिक पक्ष

मध्यपुर थिमि बिस्काजात्रा मूलत: चैत मसान्तदेखि बैशाख २ गतेसम्म संचालन हुने भएतापनि जात्राको क्रममा सम्पन्न हुने विविध सांस्कृतिक क्रियाकलापहरु भने मसान्तको ८ दिन अघिबाट नै प्रारम्भ हुन्छ । यसरी सम्पन्न हुने मुख्य मुख्य सांस्कृतिक क्रियाकलापहरु स्थानीय लायकूबाट संचालन हुने गर्दछ भने स्थानीय खल:, गुथिहरुबाट समेत विविध क्रियाकलापहरु संचालन गर्दै आएको पाइन्छ । यसरी संचालन हुने सांस्कृतिक क्रियाकलापहरुले वास्तवमै जात्रालाई चाखपूर्ण, रोमाञ्चक, खोजमूलक र अध्ययनीय बनाएको छ । यसरी संचालन हुने केहि मुख्यमुख्य सांस्कृतिक क्रियाकलापहरु यस प्रकार छन् ।

## गहना निकाल्ने र पखाल्ने



जात्रा प्रारम्भ हुनु ८ दिन अघि लायकू दरवारमा बालकुमारीको गहना भण्डारबाट निकाल्ने गरिन्छ । त्यस्तै सोही दिन दक्षिणबाराही, विष्णुवीर लगायतका अन्य खतजात्रामा संलग्न हुने देवीदेवताहरुको गहना पनि आ-आफ्नो स्थानमा निकालिन्छ । यसरी निकालेको गहना विभिन्न गुथि, खल:को रोहबरमा रुजु गरेर पखालिन्छ । उक्त गहना मध्ये जुनजुन गुथि, परिवार, व्यक्तिले चढाएको हो उनीहरुलाई हस्तान्तरण गरिन्छ र उक्त गहनालाई पुन: बैशाख १ गतेको क्वलाखुस्थित बालकुमारी लगायत जुन देवीदेवताबाट गहना ल्याएको सोही देवीदेवतालाई पुन: चढाउने गरिन्छ ।

## थांबौ राख्ने, मू तिसा र मिखु म्येय् चढाउने

चैत्र मसान्तको साँझ ऐतिहासिक थिमि बस्ती (दुई पोखरीदेखि मरुटोलसम्मको क्षेत्र) भित्र थांबौ राखिन्छ । यस बस्तीका बासिन्दाहरुले थिमि बालकुमारीलाई चढाउने बव वा भागलाई नै थांबौ भनिन्छ । उक्त ऐतिहासिक बस्तीलाई तीन भागमा बाँडेर तीनवटा थांबौ संकलन गरिन्छ । विभिन्न टोलबाट संकलन गरिएको उक्त थांबौलाई बालकुमारी मन्दिरमा लगेर चढाइन्छ । सोही साँझ थिमि देशका बालकुमारी देवीको पालो पाउँने थकालीको निवासबाट बालकुमारीको मू तिसा (मूल गहना) र मिखु म्येय् (कलिलो राँगो) निकालिन्छ । बाजागाजा, पुजासहित ससम्मान उक्त मिखुम्येय् लाई अघिल्तिर लगाउँदै मू तिसालाई लायकू टोलस्थित बालकुमारी मन्दिरमा भित्र्याइन्छ र उक्त मिखु म्येयलाई सोही राती बली दिइन्छ ।

## गुँसि छ्वयेकेगु

चैत्र मसान्तको बेलुका खत जात्रामा सहभागि गराइने देवीदेवताको मन्दिर र हरेक घरको अघिल्तिर धुनि बाल्ने गरिन्छ जसलाई स्थानीय भाषामा गुँसि छ्वयेकेगु भनिन्छ । यस क्रममा थिमि लायकूको मूलद्वार अघिल्तिर नगदेशस्थित सिद्धिगणेश गुथिका गुथियारहरुले धुनि बाल्ने परम्परा रहेको छ भने थिमिस्थित सिद्धिकाली मन्दिर अघिल्तिर थिमि लायकूको तर्फबाट धुनि बाल्ने परम्परा रहि आएको छ ।

## भैल:द्य: सालिगु



चैत्र मसान्तको राती बालकुमारीको प्रतिमालाई थिमि लायकूबाट निकाल्नु अघि दिगुटोलस्थित भैरब भित्र्याउने कार्यलाई भैल:द्य: सालिगु भनिन्छ । बालकुमारी गुथिका कस र दुवा: खलकले बाजा र दियोसहित भैरब मन्दिर पुगेर तान्त्रिक पुजाआजा मार्फत् भैरब प्रतिस्थापन गरी सेतो ओढ्नेले छोपेर ल्याइन्छ । यसरी ल्याइएको प्रतिस्थापित भैरबलाई बालकुमारी लायकूबाट बाहिरिएपछि मात्रै भित्र्याउने गरिन्छ ।

## य:सिं ठड्याउने

औपचारिक रुपमा बिस्काजात्रा प्रारम्भ भएको संकेत स्वरुप य:सिं ठड्याउने परम्परा रहेको पाइन्छ । मध्यपुर थिमिको बिस्काजात्रामा ठड्याइने य:सिंको कुरा गर्दा थिमिको क्वलाखुटोल र बादेको भांगुटोलमा चैत्र मसान्तको दिन य:सिं ठड्याउने परम्परा रहेको छ । हाल थिमिमा यो प्रचलन हराइसकेको छ भने बोदेको य:सिं ठड्याउने परम्परा कायमै रहेको छ ।

थिमिमा क्वलाखुटोलस्थित बालकुमारी मन्दिरको उत्तरपूर्वको स्थानमा ३२ हात लामो य:सिं ठड्याइन्थ्यो । एकताका य:सिंको ध्वजा हरीले उडाएर लगेपछि झण्डै ६५/७० वर्षअधिसम्म प्रचलनमा रहेको बिस्काजात्रामा य:सि ठड्याउने परम्पराको निरन्तरता टुटेको बुढापाकाहरु बताउँछन् । यस कार्यको लागि थिमिमा गुभाजु समुदायभित्र य:सिं गुथिको व्यवस्था रहेको बताइन्छ र यसको लागि आवश्यक य:सिं भक्तपुरको य:सिं गुथिबाट प्राप्त हुन्थ्यो ।

बोदेमा भाःगुटोलस्थित महालक्ष्मी मन्दिर अधिल्तिर ३२ हात लामे य:सिं ठड्याइन्छ । यसको लागि स्थानीय स्तरमा य:सिं गुथिको व्यवस्था गरिएको छ । यसरी य:सिं ठड्याउने कार्यजिब्रो छेड्ने कर्मिनाइकेको रोहवरमा सम्पन्न हुन्छ ।

## क्व मा:ला चिकंमा:ला

चैत्र मसान्तको साँझ हाँडीमा पानी, तेल, क्व:, अलैंची, सुकुमेल राखी नगदेशको सम्पूर्ण टोलमा छर्किन्छ । बालबालिकापछि लगाएर कुम्हा: (प्रजापति) नाइकेले हाँडी बोकी क्व: मा:ला चिकं मा:ला भन्दै पानी तेल छर्कंदै नगदेश परिक्रमा गर्दछ । नगर परिक्रमा पश्चात हाँडीलाई नगदेश लायकूको मुलद्धार अधिल्तिर घोप्ट्याइन्छ । यसलाई जात्राको अवसरमा नगर लिपपोट गरेको भन्ने अर्थमा बुझ्ने गरिन्छ ।

## भुइसिन्ह: ल:ल्हायेगु

बैशाख १ गते बेलुका नगदेशमा सिद्धिगणेशको जात्रा हुन्छ । उक्त जात्रा प्रारम्भ गर्नु अघि लायकूका प्रधानहरुले विभिन्न गुथि, खलकहरुलाई सिन्दुर जात्राको लागि सिन्दुर दिने चलन रहेको छ । यसक्रममा बाजागाजासहित जात्रामा सहभागि हुनको लागि ३ पटक निम्ता गर्न आइपुगेपछि सिन्ह: (सिन्दुर) गुथिका गुथियारहरु ढक्कीमा सिन्दुर, पुजा र समयबजि बोकेर लाछिटोलमा पुग्छन् । यहाँ पुजाआजा सम्पन्न गरी प्रधानहरुले सिन्दुर वितरण गर्दछ भने घ: गुथिको तर्फबाट प्रधानहरुलाई घनिचा स्वाँ प्रदान गर्दछ ।

## बँयदां बियेगु

बैशाख १ गते बहनिसिया जात्रा सम्पन्न भैसकेपछि भोलिपल्ट संचालन हुने सुथसिया जात्रामा सहभागि हुन निम्ता स्वरुप प्रधानहरुले धिमे पुच:लाई बँयदां (दक्षिणा) प्रदान गर्दछ । उक्त दक्षिणा प्रति दुई जोर बाजालाई तीन मुद्राको दर दिने प्रचलन रहेको छ । यसलाई सुथसिया जात्रामा सहभागि हुनको लागि दिइने बैना हो भन्ने गरिन्छ ।

## पस्ता थायेगु

बैशाख १ गते बोडेस्थित महालक्ष्मी मन्दिर अगाडि पस्ता थायगु अर्थात् तीनमुखी बाजा बजाउने गरिन्छ । यसक्रममा पालैपालो भजन गाउने, बाजा बजाउने र प्वंगा (फुकेर बजाइने एक प्रकारको बाजा) बजाउने कार्य हुन्छ । यसै बेला महालक्ष्मी र भैरवको मूर्तिलाई महालक्ष्मी मन्दिरमा प्रदर्शनको लागि ल्याइन्छ । त्यसपछि पस्ता गुथिद्वारा पता: (ध्वजा) चढाइन्छ । जुन भिन्दुवा खलकको पस्ता बजाउने व्यक्तिले टिपेर महालक्ष्मी मन्दिरमा बाँधिदिन्छ । यसको लगत्तै महालक्ष्मी मन्दिरको पहिलो छानाबाट गोजामरी ( त:ग:मरी) दान गरिन्छ । यसैदिन जात्रामा संलग्न हुने देवतालाई आआफ्नो मन्दिरमा प्रदर्शन गर्न लगिन्छ भने साँझतिर महालक्ष्मी मन्दिरमा रहेको खाल्डोमा गल थनेगु (खाल्डो भर्ने) भनेर जाँड खन्याइन्छ । खाल्डो छिटो भरेमा त्यो साल छिटो वर्षा लाग्छ भन्ने जन विश्वास पाइन्छ ।

## घ: सालेगु

तिगनीको नीलबाराही जात्राको क्रममा चैत मसान्तको ४ दिन अघि घ: क्वहाँ बिज्याकेगु (घ: सालेगु पनि भन्ने गरिएको) भनेर नजिकैको जंगलमा रहेको नीलबाराही मन्दिरमा गएर पूजाआजा सम्पन्न गरिन्छ । त्यसपछि चैत मसान्तको दिन जात्रा गरिने नीलबाराहीको मूर्तिपखालेर नीलबाराही मन्दिर लगी बोको बलीसहित पूजा गरेर उक्त मूर्तिलाई तिगनि स्थित त:धं टोलको डबलीमा बिसाइएको खतमा बिराजमान गराइन्छ । यो प्रक्रिया साँझ ७-८ बजेतिर सम्पन्न हुन्छ । यसको लगत्तै सम्पूर्ण वासिन्दाहरुले घरघरमा चल्चाघ: पूजा गरेर भोज खान्छन् ।

## लसकुस गर्ने

यसरी जात्रा सम्पन्न भइसकेपछि नीलबाराहीको मूर्तिलाई घ:छेँ भित्र्याउने गरिन्छ । यसक्रममा विभिन्न स्थानमा पुगेर आएको हुँदा चोख्याउनु पर्छ भन्ने मान्यता अनुरुप थिमिका बज्राचार्यद्वारा पूजा गरेर बासा (विशेष प्रकारको कपडा जसलाईदिउता लाने बाटोमा कार्पेट झै बिछ्याईन्छ) बिछ्याएर लसकुस गरी भित्र्याइन्छ ।

## खतजात्रा

मध्यपुरथिमि बिस्काजात्रा भन्ने बितिकैसामान्यत: थिमि बालकुमारीको खतजात्रा भनेर बुझ्ने गरिन्छ । वास्तवमा मध्यपुरथिमिको बिस्काजात्राभित्र पनि यहाँका विभिन्न क्षेत्रहरु बालकुमारी, चपाचो, नगदेश, बोदे र तिगनिमा तीन दिनसम्म मनाइने जात्राहरु पनि पर्दछ । थिमि बालकुमारी जात्रा चिनै सम्पूर्ण क्षेत्रहरुबाट आआफ्ना खतसहित सबैजना थिमि क्वलाखुटोलमा भेला भई मनाउने एकताको प्रतिकको रुपमा विकास भएको जात्राको एकिकृत स्वरुपमात्र हो भन्नु अन्यथा नहोला । पछिल्लो समयमा लोहकिथली (विगत ३ वर्षअघि) मा समेत खतजात्राको विकास गरिएको छ । विभिन्न देविदेवताहरुको नेतृत्वमा सम्पन्न हुने उक्त जात्रालाई निम्नानुसार अध्ययन गर्न सकिन्छ ।

थिमिमा संचालन हुने जात्रा
बोदेमा संचालन हुने जात्रा
लोहकिथलीमा संचालन हुने जात्रा
नगदेशमा संचालन हुने जात्रा
तिगनीमा संचालन हुने जात्रा

## थिमिमा संचालन हुने जात्रा

### १) चान्हसिया जात्रा



वैशाख १ गते राती मनाइने थिमिको बालकुमारी क्षेत्रमा मनाइने जात्रालाई चान्हसिया (रातिको) जात्रा भनिन्छ । यस अन्तर्गत पनि द्यः क्वहाँ बिज्याकिगु र बाराही गणको जात्रा गरी दुईवटा जात्रा संचालनमा रहेको देखिन्छ ।

द्यःक्वहाँ बिज्याकिगु जात्रा : थिमि लायकूभित्र रहेको तलेजुबाट बालकुमारीको प्रतिमालाई खतमा राखेर क्वलाखुटोलस्थित बालकुमारी मन्दिरमा प्रदर्शन गर्न लगिने जात्रालाई द्यःक्वहाँ बिज्याकिगु भनिन्छ । यसको लागि सर्वप्रथम बालकुमारी प्रतिमालाई निकाली द्यःपिचाः( ढक्की)मा राखिन्छ । यसको लागि आवश्यक साइत र ८ दिन अघि गहना निकाल्दाको साइत एउटै हुनु पर्दछ । त्यसपछि नगरका पुँ ( चित्रकार) खलकद्वारा बालकुमारीको दृष्टि खुलाउने काम हुन्छ र ज्वःभ्यः (एक प्रकारको माटोको भाँडो) मा राखी कुनै प्रकारको बिटुलो नहोस्, झिंगासम्म पनि नभन्कियोस् भनेर पहरा दिइन्छ । त्यसपछि विधिवत् प्रक्रियाबाट भालिं क्वथा (भण्डार कोठा)मा भित्र्याइन्छ । यसै क्रममा कसः र दुवाः खलकद्वारा लायकू मूलद्वार अगाडिको देउता (खाल्डोको) र दिगु टोलको भैलः द्यः (भैरव) भित्र्याउने काम हुन्छ । यसको लगतै कसः र पःमाः खलक मिलेर बालकुमारीलाई खतमा बिराजमान गराउने बितिक्कै खत उचालेर चिलाख, धिमे र दर्शनार्थीहरुको बीचबाट बालकुमारी मन्दिर ल्याई पुऱ्याइन्छ । यसलाई स्थानीय भाषामा बालकुमारी क्वहाँ बिज्याकेगु भनिन्छ । बालकुमारी खत मन्दिरभित्र लगी बिसाईसकेपछि द्यः क्वहाँ बिज्याकिगु जात्रा सम्पन्न हुन्छ ।

दक्षिणबाराही गण जात्रा : दक्षिणबाराही गणको जात्रामा दधिकोट, क्वाछें स्थित दक्षिणबाराही, दधिकोट, हिंचोकस्थित हरिसिद्धि र थिमि, यमाटोलस्थित अजिमा सहित ३ वटा खतको सहभागीता रहन्छ । द्यः क्वहाँ बिज्याकिगु जात्रा सम्पन्न भए लगतै यो जात्रा प्रारम्भ हुन्छ । यसक्रममा धिमे र चिलाख सहितका जात्रालुहरु दक्षिणबाराही गुथि पाःलाः (गुथियार, जसको पालो परेको हुन्छ) को घर पुग्छन् र जात्रा प्रारम्भ हुन्छ । दक्षिणबाराहीको नेतृत्वमा संचालन हुने यस जात्रा नगरका विभिन्न टोल र स्थानहरुको परिक्रमा (हे. चित्र १) पश्चात् क्वलाखुटोल खत बिसाए पछि सम्पन्न हुन्छ ।



### १) बाँयलिसिया जात्रा

बाँयलिंसिया जात्रा बैशाख १ गतेको साँझ (५ बजेतिर) थिमिको बालकुमारी र चपाचो क्षेत्रमा सम्पन्न हुन्छ । यस अन्तर्गत बालकुमारी क्षेत्रमा विष्णुवीर र चपाचो क्षेत्रमा सिद्धिकालीको नेतृत्वमा जात्रा सम्पन्न हुन्छ । सिद्धिकाली गणको जात्रा द्वंदः (हातिमहाकाँकाल) देखि उत्तरपश्चिमी क्षेत्र र विष्णुवीर गणको जात्रा द्वंदःबाट दक्षिणपूर्वी भेगमा हुने गर्दछ ।

विष्णुवीर गण जात्रा : यो जात्रा इनायलाछि टोलस्थित राजगणेशको उपस्थितिपछि स्थानीय कयकुतांबाट सुंगास्थित विष्णुवीरको नेतृत्वमा प्रारम्भ हुन्छ । यो जात्रा बालकुमारी र चपाचो क्षेत्रका विभिन्न टोल र स्थानहरुको परिक्रमा पश्चात् क्वलाखु टोलमा पुगेर सम्पन्न हुन्छ । यस जात्रामा पर्सिक्व गणेश (पर्सिक्व टोल), दताः गणेश (दथु टोल), भादे गणेश (वामुने टोल), थास्वमा गणेश (क्वलाखु टोल) र गांताः गणेश (तछु टोल) गरी ६ वटा खतको सहभागिता रहन्छ । जात्राको लागि विष्णुवीरको खत सुंगाटोलबाट कयकूतां पुऱ्याउने क्रममा धिमेबाजाको सट्टा सिबाजं (मलामीको बेला बजाइने बाजा) बजाइने र जात्रामा पनि मलामीको रुपमा सहभागी हुने प्रचलन यस जात्राको रोचक पक्ष रहेको छ ।



सिद्धिकाली गण जात्रा : यो जात्रा पनि राजगणेशको उपस्थितिमा इनायक्वबाट सिद्धिकालीको नेतृत्वमा प्रारम्भ हुन्छ । विष्णुवीर जात्रा लगतै प्रारम्भ हुने यस जात्रामा चोदे गणेश (गुरु गणेश), चपाचो गणेश (चपाचो), क्वसि गणेश (द्वंदः), क्वकि गणेश (दिगुटोल), गांचानिनि गणेश (गांचानिनि) र सिवाः गणेश ( सिवाःटोल) को सहभागिता रहन्छ । यो जात्रा चपाचो क्षेत्रका विभिन्न टोल र स्थानहरुको परिक्रमा (हे. चित्र २) पश्चात् स्थानीय लाछिटोलमा पुगेर सम्पन्न हुन्छ ।

### १) सुथसिया जात्रा



बैशाख २ गते बिहान संचालन हुने बालकुमारी जात्रा थिमिको मूल जात्रा हो । यसलाई सुथसिया जात्रा भनिन्छ । बिहान (८-९ बजेतिर) प्रारम्भ हुने यस जात्रामा थिमि क्षेत्रका विष्णुवीर गण, दक्षिणबाराही गण, सिद्धिकाली गण लगायत २३ देवीदेवताहरुको खत सहभागि हुन्छ । बालकुमारी मन्दिर परिसरमा विष्णुवीर गण, दक्षिणबाराही गण अघिल्लो दिनको जात्रा सम्पन्न भएदेखि यही परिसरमा बिसाइएको हुन्छ भने यसदिन चपाचोको सिद्धिकाली गण, नगदेशको सिद्धिगणेश, दता: गणेश यस परिसरमा भेला हुन्छ । यसरी सबै खत भेला भैसकेपछि सिद्धिगणेश र सिद्धिकालीलाई बालकुमारीको फूल प्रसादको रुपमा सिउ (अघिल्लो दिन बालकुमारीमा बली दिएको कालो बोकाको टाउकोको भाग) चढाउने गरिन्छ । बालकुमारीको प्रसाद दिने कार्य सम्पन्न भएपछि बालकुमारी मन्दिर अघिल्तिरको पाटीमा बसेर लायकूका प्रधान, कस खलकले सिन्दुर चढाएर परम्परागत नियमानुसार जात्रा शुरु गर्न लागि खत उचाल्ने अनुमति प्रदान गरेपछि जात्रा प्रारम्भ हुन्छ । जात्रा प्रारम्भ भए लगतैसिद्धिगणेश एक्लै आफ्नो पृथक परिक्रमा मार्ग (हे. चित्र ४) हुँदै तिगनी प्रवेश गर्दछ भने अन्य खतहरु थिमिको क्वलाखुदेखि दिगुटोलसम्मको रुटमा जात्रा गरिन्छ । ।

यसरी सहभागी भएका खतहरु (सिद्धिगणेश बाहेक) दुई समूहमा बाँडिएर जात्रा गरिन्छ । एउटा दक्षिणबाराही र विष्णुवीर गण समेतको समुहलाई विष्णुवीरले नेतृत्व गर्दछ भने सिद्धिकाली र यसको गण, अजिमा लगायतका अन्य खतहरुको समुहलाई बालकुमारीले नेतृत्व गर्दछ । यसरी उचालिएका खतहरु मध्ये विष्णुवीर र दक्षिणबराहीको खतले बालकुमारी नउचालुन्जेल थास्वमा गणेशनिर बाटो छेकेर बस्छ र बालकुमारीको खत उचालेर मन्दिर परिक्रमा गर्ने बित्तिकै विष्णुवीरको समूह मूलबाटो हुँदै थिमि लायकू अगाडि बिसाउने गरिन्छ । यस क्रममा विष्णुवीर र दक्षिणबाराहीको खत लायकूको मूलद्वार छेक्ने गरी ढोकैमा बिसाउँछ भने बाँकी खतहरु क्रमश: मूलद्वारबाट उत्तरतिर मूलबाटो छेउमा बिसाउँछ । यता बालकुमारी गण क्वलाखुबाट लायकू टोल हुँदै दिगुटोलतिर लाग्दछ र सोहीबेला विष्णुवीर गण र दक्षिणबाराही बालकुमारी मन्दिर परिक्रमा गर्नजान्छ । दिगुटोल परिक्रमा गर्न गएको बालकुमारी फर्केर लायकू पुग्नु भन्दा अघि दक्षिणबाराही र विष्णुवीर गण लायकू आइपुगेर मूलद्वार छेक्ने गर्दछ भने बालकुमारी गण क्वलाखुतिर लाग्दछ । यसै बेला पुन: दक्षिणबाराही र विष्णुवीर गण दिगुटोलको भैरब मन्दिर परिक्रमा गरेर पुन: लायकूको मूलद्वार छेक्न आईपुग्दछ र बालकुमारी गण क्वलाखुबाट पुन: दिगुटोलतिर लाग्दछ । यसरी निकै रमाइलो गरी यस दिनको जात्रा संचालन हुन्छ । विष्णुवीर गण भन्दा बालकुमारी गण चाँडै लायकू आइपुगेको अवस्थामा मूलद्वार खाली नराखी दता: गणेशले मूलद्वार छेक्ने कार्य गर्दछ । बालकुमारीको लायकू प्रवेशसँगैजात्रा सम्पन्न हुने भएकोले जात्रालाई पूर्ण अवधीसम्म संचालन गर्न लायकूको मूलद्वार छेक्ने प्रचलन रहेको हो । यसरी जात्रा गर्दै तीन पटक भैरब मन्दिर परिक्रमा सम्पन्न भएपछि मूलद्वार खुल्ला छोडिन्छ र बालकुमारी लायकू प्रवेश गर्दछ । यहाँ बालकुमारीलाई विश्राम गराई बालकुमारी गण, विष्णुवीर गण, दक्षिणबाराही लगायत सबै आ-आफ्नो गन्तव्यमा पुगी बिसाइन्छ । उता बालकुमारी मन्दिरको दुई परिक्रमा पश्चात् सिद्धिकाली गण चपाचोतिर लाग्दछ र आफ्नो बायलिंसिया जात्राको रुटमा परिक्रमा गरी जात्रा समापन गर्दछ ।

स्मरणयोग्य छ, सुथसिया जात्रा वा बैशाख २ गतेको दिन शनिवार परेमा दक्षिणवाराहीले क्वलाखु (बालकुमारी) उकालोबाट तलुटोल जाने बाटोमा छेकेर विष्णुवीर गणलाई क्वाछेंस्थित दक्षिणबाराही मन्दिर परिक्रमा गर्न अनुरोध गर्दछ । यसपछि यी सबै खत दक्षिणबाराही परिक्रमा पश्चात्मात्रैआआफ्नो गन्तव्यतिर पुगी विसर्जन गर्दछन् ।

### नगदेशमा संचालन हुने सिद्धिगणेश जात्रा



मध्यपुर थिमि बिस्काजात्रा अन्तर्गत नगदेश क्षेत्रमा सिद्धिगणेश (नगदेश) जात्रा सम्पन्न हुन्छ । सिद्धिगणेशको उपस्थिति बिना क्वलाखु टोलबाट संचालन हुने सुथसिया जात्रा प्रारम्भ गर्न नहुने प्रचलन रहेको छ । साथै नगदेशको नगरदेवता यस सिद्धिगणेशको जात्रा नगदेश बाहेक थिमि, बोदे र तिगनीसम्म पुगेर संचालन गर्ने परम्परा रहेको छ । यसबाट मध्यपुर थिमि बिस्काजात्रामा सिद्धिगणेशको महत्वलाई दर्शाउँछ ।

### १) बहनिसिया जात्रा

बैशाख १ गते बेलुका (९ बजेतिर) को जात्रालाई बहनिसिया जात्रा भनिन्छ । नगदेश लायकूका प्रतिनिधिले सिद्धिगणेशलाई धनिचास्वां (एक प्रकारको फूल) र सिंदूर चढाएपछि स्थानीय लाछिटोलबाट प्रारम्भ हुने यो जात्रा नगदेशका विभिन्न टोलहरुको परिक्रमा पश्चात्पुन: लाछिटोल पुगेर सम्पन्न हुन्छ ।

### २) सुथसिया जात्रा

सिद्धि गणेशको अर्को जात्रा बैशाख २ गते बिहान (७ बजेतिर) प्रारम्भ हुन्छ । यस जात्रामा अघिल्लो दिन झैं नगदेशका विभिन्न टोलको परिक्रमा गराई सिद्धिगणेशलाई बाहाखाबजार, भिमसेन चोक हुँदै थिमिको मूलसडक हुँदै क्वलाखु टोल पुऱ्याइन्छ । यहाँ बालकुमारी जात्रा प्रारम्भ गराएर थिमिको विभिन्न स्थानको परिक्रमा गरी सिद्धिगणेशलाई बाहाखा मिलरोड हुँदै बोदेको सानुच्व पुऱ्याइन्छ । (हे. चित्र ५) यहाँबाट स्वागतार्थ प्रतिक्षारत तिगनीको निलबाराहीसहित तिगनीको तःधंटोल पुगेर पूजा थाप्ने काम हुन्छ । त्यसपछि तिगनीको विभिन्न स्थानहरुको परिक्रमा पश्चात दुईटै खत नगदेश लगिन्छ र नगदेशको विभिन्न टोल घुमेर न्याःगाःटोलस्थित घःछें प्रांगणमा पुगेर सिद्धिगणेश जात्रा सम्पन्न हुन्छ ।

### बोदेमा संचालन हुने जात्रा

जिब्रो छेड्ने प्रचलनले बोदे बिस्काजात्रालाई पृथक पहिचान दिएको छ भने नगरपरिक्रमा गर्ने क्रममा जात्राको नेतृत्व सम्बन्धी अध्ययन चाखलाग्दो छ । मध्यपुर थिमिमा संचालन हुने अधिकांश जात्रा मूलदेवताको नेतृत्वमा भइरहेको देखिन्छ तर बोदेको नगरदेवता महालक्ष्मीले यहाँको जात्रा नेतृत्व गरिएको देखिँदैन । स्थानीय कालिकालाई नगरको नकिं (थकाली) भएकोले हेरचाह पूर्वक सम्पूर्ण देवीदेवताको पछाडि आफू बसेर जात्रामा सहभागि हुने गरेको एवम् सबै देवीदेवतालाई आ-आफ्नो स्थानमा विसर्जन गराई अन्तमा मात्रैआफू गन्तव्यतिर लाग्ने प्रचलन रहि आएको छ । कालिकाको लसकुस (घर भित्र्याउने कार्य) मा सम्पूर्ण नगरबासीहरु निकै आस्थापूर्वक चिलाख लिएर सहभागि हुने र यसको समापनसंगै जात्रा सम्पन्न भएको मानिन्छ । यसबाट बोदेको बिस्काजात्राको नेतृत्व कालिकाले गरेको देखिन्छ । बोदेमा बैशाख १ बेलुकी र २ गते बिहान जात्रा संचालन हुन्छ ।



### १) बहनिसिया जात्रा

बैशाख १ गते बेलुका (११ बजेतिर) कालिकालाई स्थानीय लाछिटोलबाट बाजागाजा र चिलाखसहित ताँक्वस्थित कालिका मन्दिरमा लगिन्छ । यसलाई बहनिसिया जात्रा भनिन्छ । यसक्रममा कालिकालाई त्यहिं छोडी सबैजना आ-आफ्नो घरतिर लाग्दछ र बिहान पख (उज्यालो नहुँदै) कालिकालाई कसैलाई थाहा नदिई सुतुक्क पाचो टोल ल्याई पुऱ्याउँछ ।

### २) जिब्रो छेड्ने जात्रा

बैशाख २ गते दिन दिउँसो (१२ बजेतिर) बोदेमा जिब्रो छेड्ने जात्रा संचालन हुन्छ । स्थानीय पाचो टोलस्थित गणेश मन्दिरनिरको पाटी अघिल्तिर बनाइएको अग्लो मञ्चमा जिब्रो छेड्ने गरिन्छ । यस क्रममा पःमां तथा जिब्रो छेड्ाउने कर्मिनाइके, जिब्रो छेड्ने सियो बनाउने नकर्मि क्रमशः बाजागाजसहित पाचो आइपुग्छन् । त्यसपछि जिब्रो छेड्ने व्यक्तिलाई बाजागाजासहित तीनपल्टसम्म बोलाउन जानुपर्ने प्रचलन रहेको छ । तेस्रो पल्टको निम्तापछि बाजागाजासहित नगरका सम्पूर्ण देवीदेवताको दर्शन गरी जिब्रो छेड्ने व्यक्ति पाचो आइपुग्छ । त्यसको लगतै पःमांबाट सियो हस्तान्तरण गरेर लिई कर्मिनाइकेद्वारा जिब्रो छेड्ाउने गरिन्छ । जिब्रो छेडिसकेपछि सियोलाई जिब्रो मै अड्काएर बलेको म्यय् (बाँसद्वारा निर्मित अर्धवृताकारको चिलाख) बोकेर नगर परिक्रमा गर्दछ । नगरपरिक्रमाको क्रममा जिब्रो छेड्ने व्यक्तिको इच्छाअनुसार बोदेबाहेक थिमि, नगदेश र तिगनीसमेतको परिक्रमा गर्न सक्दछ । परिक्रमा पछि महालक्ष्मी मन्दिर पुगेर सियो निकाल्ने गरिन्छ । यस क्रममा स्थानीय पाचो गणेशको उपस्थितिमा कर्मि नाइकेद्वारा सियो निकालेर महालक्ष्मी मन्दिरबाट उत्तरतिर रहेको गणेशको मन्दिरको काठमा ठोक्ने गरिन्छ र सियोले बनाएको घाउमा महालक्ष्मी मन्दिरको माटो राखिदिने गरिन्छ ।



यता जिब्रो छेड्ने व्यक्ति नगरपरिक्रमामा निस्केपछि खतजात्रा शुरु हुन्छ । यस खतजात्रामा पाचो गणेश, हासिमला गणेश, भोरिखा गणेश, महालक्ष्मी, घ्वंबाराही र गःसिबाराही को सहभागिता रहन्छ । स्थानीय पाचोबाट प्रारम्भ हुने यो जात्रा नगरको विभिन्न टोल र स्थानहरुको परिक्रमा (हे. चित्र ८) पश्चात् स्थानीय लाछिटोलमा पुगेर कालिकाको लसकुस लगतै खतजात्रा सम्पन्नको मानिन्छ र अन्य खतहरु आआफ्नो टोल फर्केर बिसाइन्छ । परम्परा अनुसार २०/२१ वर्ष अघिसम्म तिगनीमा समेत लगेर जात्रा गरिने गरिन्थ्यो भने यहिक्रममा थिमिमा ल्याउने प्रचलन करिब ७५/७६ वर्ष उतासम्म चलेको पाइन्छ ।

## तिगनीमा संचालन हुने जात्रा



तिगनीस्थित नीलबाराही काठमाडौं उपत्यकाका चार बाराहीहरुमा पर्दछ । मध्यपुर थिमि बिस्काजात्रा अन्तर्गत स्थानीय तिगनी क्षेत्रमा यसको जात्रा गरिन्छ । विभिन्न माध्यम मार्फत् बोदे, थिमि, नगदेशका जात्राहरु प्रचारप्रसारमा आउने गरेपछि यिनै जात्रासँग हातेमालो गर्दै सम्पन्न भइरहेको निलबाराही जात्राले भने कहिं कतै पनि लेखिने वा देखिने मौका पाएनन् ।

### १) बहनिसिया जात्रा

बैशाख १ गतेको दिन बेलुकीपख (८ बजेतिर) तिगनीमा पनि बहनिसिया जात्रा हुन्छ । स्थानीय त:धंटोलमा राखिएको नीलबाराहीलाई बाजागाजा र चिलाखसहित तिगनी र सरस्वती खेलका विभिन्न टोल र स्थानहरुको परिक्रमा पश्चात् पुन: त:धंटोलमा पुगेर यस दिनको जात्रा सम्पन्न हुन्छ ।

### २) सुथसिया जात्रा

नीलबाराहीको अर्को जात्रा बैशाख २ गते बिहान (११ बजेतिर) हुन्छ जसलाई सुथसिया जात्रा पनि भनिन्छ । यस क्रममा नगदेश र बोदेबाट तिगनि ल्याइने देउताहरुको बाटो हेर्न निलबाराहीलाई बोदेको सानुच्च (सानुटार) सम्म ल्याई पुन्याईन्छ । यहाँबाट नगदेशको सिद्धिगणेश र बोदेको महालक्ष्मी गण समेतको सहभागितामा तिगनी त:धंटोलस्थित डबलीमा बिसाई पूजा थाप्ने गरिन्छ । यसपछि तिगनीका विभिन्न टोलहरु परिक्रमा गराई सबै खत समेत नगदेश लगिन्छ र नगदेशको विभिन्न टोल परिक्रमापछि सिद्धिगणेश जात्रा सम्पन्न हुन्छ भने नीलबाराही र महालक्ष्मी गण थिमिको बालकुमारीसम्म पुगेर जात्रा गरिन्छ । यहाँबाट बोदे पुगेर महालक्ष्मी गण विश्राम गरेपछि बोदेको जात्रा पनि सम्पन्न हुन्छ र नीलबाराही अघिल्लो दिन झैं सरस्वतीखेलसम्म पुगेर जात्रा गरिन्छ । यहाँबाट फर्केर नीलबाराही मन्दिर परिक्रमा गरी त:धंटोल पुगेपछि जात्रा सम्पन्न हुन्छ ।

यसरी तिगनी, बोदे, नगदेश र थिमिका देवीदेवताहरु विभिन्न क्षेत्रमा पुगेर गरिने जात्रा हाल आएर आ-आफनै स्थानमा खुम्चिन पुगेको छ । यसले परम्परा त मासिएको छ नै, जात्राको रौनकतामा पनि ह्रास आएको छ ।



## लोहकिथलीमा संचालन हुने सिद्धिकाली जात्रा

विगत दुई वर्षदेखि संचालनमा लोहकिथलीको सिद्धिकाली खतजात्रा थिमि इनायक्वस्थित सिद्धिकाली जात्रालाई आधार बनाई निर्माण गरिएको छ । ऐतिहासिक वस्ती थिमिबाट बसाइ सर्नेक्रममा लोहकिथली पुगेका स्थानीयबासीहरु आफ्ना नगरदेवताको जात्रामा सरिक हुन हरेक वर्ष बाजागाजासहित लोहकिन्थलीबाट थिमिसम्म जाने गरिएको भएपनि आफ्नै गाउँघरमा जात्राको रौनक महशुस गरी पछिल्लो समयमा जात्राको विकास गरिएको बताइन्छ । यो जात्रा दुईदिन संचालन गरिन्छ । लोहकिथली चोकबाट ३ सयमिटर जति दक्षिणतिर दिव्यश्वरी मन्दिरनिर मूल सडकमा पर्ने गणेश मन्दिर प्रांणबाट प्रारम्भ हुने बैशाख १ गते (साँझ ५ बजे) को जात्रालाई बाँयलिसिया जात्रा नामांकरण गरिएको छ । यस दिन जात्राअघि बाजागाजासहित स्थानीय सिद्धिकालीलाई भोखाटोलस्थित घ:छेंबाट दिव्यश्वरी मन्दिरनिरको गणेश मन्दिरमा प्रदर्शनी गर्न लगिन्छ । यहाँ १०/१५ बिसाएर पूजा थापेपछि जात्रा शुरु हुन्छ । जात्राको क्रममा लोहकिथली चोकबाट दक्षिण र उत्तरतिरका पुरानाबस्तीहरु परिक्रमा पश्चात् पुन: घ:छें आएर त्यसदिनको जात्रा सम्पन्न गरिन्छ । सुथसिया जात्रा भनेर नामांकरण गरिएको बैशाख २ गतेको जात्रा बिहान (८ बजेतिर) प्रारम्भ हुन्छ । घ:छेंबाट शुरु हुने उक्त जात्रा अघिल्लो दिनकै मार्ग भएर संचालन गरिन्छ भने यसदिन लोहकिथली चोकको उत्तरतिरका थप केही टोलहरुको समेत परिक्रमा गराइन्छ । यसरी विभिन्न टोलहरुको परिक्रमापछि पुन: घ:छें पुगेर जात्रा सम्पन्न गर्दछ ।






अनुसूची १

## दक्षिणबाराही जात्रा

प्रयोग गरिने परिक्रमा मार्ग




अनुसूची २

**विष्णुवीर जात्रा**

प्रयोग गरिने परिक्रमा मार्ग

**जात्रामा सहभागी हुने खतहरु**

| | |
|---|---|
| १ | सिद्धिकाली (इनाय्क्वद्य:) |
| २ | चोदे गणेश |
| ३ | क्वसि गणेश |
| ४ | चपाचो गणेश |
| ५ | दिगु गणेश |
| ६ | गांचाननि गणेश |

**परिक्रमा गरिने स्थानहरु**

| | |
|---|---|
| १ | इनाय्क्व (प्रारम्भ) |
| २ | दोंद:(हात्तिमहाँकाल) |
| ३ | कुतिंचिवा: |
| ४ | कुमा:ननि |
| ५ | नास:ननि |
| ६,७ | चपाचो |
| ८ | गार्चा |
| ९ | स्वङ्गा:पुखू |
| १० | दुवा:फल्चा |
| ११ | बाग:तुथि |
| १२ | वा:ननि |
| १३ | भुलांखेल |
| १४ | दोंद (हात्तिमहाँकाल) |
| ३ | कुटिंचिवा: (समापन) |

## अनुसूची ३
# सिद्धिकाली जात्रा
प्रयोग गरिने परिक्रमा मार्ग

बैशाख १ गतेको परिक्रमा मार्ग
बैशाख २ गतेको थप परिक्रमा मार्ग

**परिक्रमा गरिने स्थानहरु**

| | |
|---|---|
| १ | द्य:छें (सुथिसिया जात्रा प्रारम्भ) |
| २ | गणेश मन्दिर |
| ३ | भोखाटोल |
| ४ | दक्षिणकाली मन्दिर |
| ५ | दिव्यश्वरी मन्दिर |
| ६ | लोहकिन्थली चोक |
| ७ | हेजुटोल |
| ८ | कुटुटोल, क्वसिना गणेश |
| ९ | द्वारेटोल, सिद्धिगणेश |
| १० | हेकाटोला |
| १० | हेल्थपोष्ट चोक |
| ११ | बट गणेश |
| १२ | कवेटोल, सिद्धिकाली |
| ६ | लोहकिन्थली चोक |
| २ | गणेश मन्दिर |
| १ | द्य:छें (सुथसिया जात्रा समापन) |

## अनुसूची ४
# सिद्धिकाली जात्रा (लोहकिन्थली)
प्रयोग गरिने परिक्रमा मार्ग

**परिक्रमा गरिने स्थानहरु**

१ क्वलाखु (प्रारम्भ)
२ कवलाखु उकालो
३ तछुटोल
४ सुंगाटोल
५ यमाटोल
६ क्वलाखु
७ मरुटोल
८ लाय्कू
९ निगूपुखू
१० चोदेतां
११ न्ह्यपांछेंटोल
१२ चोदे
१३ जलाखु
१४ भुलांखेल
१५ दोंद
१६ चिवा:लाछि
१७ कुमा:ननि
१८ तुल:ननि
१९ नास:ननि
२० चपाचो
२१ वाचुननि
२२ चिवालाछि
२३ चपाचो
२४ स्वंगा:पुखू
२५ गुंग:चिवा:
२६ बाहाखा टोल
२७ मिलरोड (नगदेश प्रवेश)




अनुसूची ५

# थिमि भित्र सिद्धिगणेश जात्रा

## प्रयोग गरिने परिक्रमा मार्ग

## अनुसूची ६

# बालकुमारी जात्रा

### प्रयोग गरिने परिक्रमा मार्ग



## अनुसूची ७

# कालिका जात्रा

### प्रयोग गरिने परिक्रमा मार्ग




अनुसूची ८

## बालकुमारी प्रदर्शनी जात्रा

प्रयोग गरिने परिक्रमा मार्ग




अनुसूची ९

## सिद्धिगणेश जात्रा

प्रयोग गरिने परिक्रमा मार्ग



बालकुमारी (क्वलाखुद्य:)



कालिका (वालखुद्य:)



दक्षिणबाराही (क्वाद्यैद्य:)



हरिसिद्धि (हिंच्वद्य:)



अजिमा (अजिमाद्य:)



विष्णुवीर (सुंगा:द्य:)



प्रथम गणेश (पसिंक्व गणेद्य:)



गुरु गणेश (दता:गणेद्य:)



अष्ट विनायक (भादेइनाय)



स्थानेश्वर गणेश (थास्मा गणेद्य:)



तघु गणेश (गाता गणेद्य:)



नारायण (नाराद्य:)



सिद्धिकाली (इनाय्क्वद्य:)



गुरु गणेश (चोदे गनेद्य:)



क्वसि गणेश(कवसिना गणेद्य:)



चापाचो गणेश (दु इनाय्द्य:)



राजगणेश (इनालाछि गणेद्य:)



दिगु गणेश



गांचानति गणेश



सिद्धिगणेश (सिवा:गणेद्य:)



सिद्धिगणेश (नरस गणेद्य:)



महालक्ष्मी



त:धि बाराही



चीधि बाराही


भोरिखा गणेश


पाचो गणेश


कालिका


हासिमला गणेश


निलबाराही (तिगनी)


सिद्धिकाली (लोहकिथली)

पुनश्च: माथि पनि उल्लेख गरिसकिएको छ, मध्यपुर थिमि बिस्काजात्रामा ३२ खतको जात्रा हुने भएकोले यसलाई स्वीनिखा जात्रा भनेर पनि चिनिन्छ तर विविध कारणवश: अचेल थिमिका तीनवटा खतहरु (हिपा:घ:, मनबिनायक व वटुक भैरव) को सहभागिता देखिँदैन । त्यसैगरी नारायणको खत पनि जात्रा नगरी खतलाई प्रदर्शनीमा मात्र राख्ने गरिएको छ । अर्को तर्फ हामीले सुन्दै आएको परम्परादेखि प्रचलित थिमि, नगदेश, बोद, तिगनीबीच जात्राको अन्तर सम्बन्ध र जात्राको आवतजावत अचेल देख्न पाईंदैन ।

आशा गरौं नयाँनयाँ मन्दिरहरु र जात्रा समेतको निर्माणले परम्परागत जात्रालाई कसरी जीवन्त बनाउने एवम् हाम्रा पूर्वजहरुले संचालनमा ल्याएको जात्राको स्वरुपलाई कसरी पुनर्जिवित गर्ने आदि सम्बन्धमा सरोकारवाला लगायत सम्पूर्ण नगरबासीहरुमा नि:सन्देह उत्साह र उर्जाथपिनेछ, सचेतना जाग्नेछ र जात्राको ऐतिहासिक स्वरुपको पुनर्जन्म हुनेछ । वास्तवमा पूर्वजहरुप्रतिको सम्मान एवम्हाम्रा भावीपुस्ताहरु प्रतिको जिम्मेवारी यहि हुनेछ । धन्यवाद ।

# कृतज्ञता

सर्वप्रथम बिस्काजात्रा तथा नव वर्ष २०७९ को उपलक्ष्यमा हार्दिक मगलमय शुभकामना टक्रयाउँछौं।

नगदेशबाट - राजकुमार बाडेजु, कृष्ण बहादुर घजु

थिमिबाट - कृष्णलाल गोजा श्रेष्ठ, ज्ञानमणी बज्राचार्य, कृष्णचरण श्रेष्ठ, बालकृष्ण पात्या, तुईलाल कायस्थ, धर्मसुन्दर बज्राचार्य, गोपाल जगुलु

बोडेबाट - विनोद खम्बु, दिलभक्त जयना

लोहकिन्थली - जगतकृष्ण प्रजापति

को साथै अध्ययनको क्रममा संगसंगै हिंडेर, जानकारी संकलन गरेर सहयोग गर्नु हुने साथ

प्रकाशनको लागि पहल गर्ने साथी राजेश श्रेष्ठलाई शहस्र धन्यवाद। पुस्तिका प्रकाशनको लागि आर्थिक टेवा दिने संघ संस्थाहरुलाई नमन गर्दछु।

**प्रकाशन सहयोगी संघ/संस्थाहरू:**



सिद्वार्थ बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-४, शंखधर चोक, फोन : ६६३३२४६




OSLA NEPAL
(Our Social Leading Association, Nepal)
Madhyapur Thimi-4, Dathu Tole



ओसला बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-४, दथुटोल, फोन : ६६३६५४५



शंखधर बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-४, शंखधर चोक, फोन : ५६३९१८७



बालकुमारी बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-४, शंखधर चोक, फोन : ५०९३३२३, ५०९३४५५



नव आदर्श बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-४, शंखधर चोक, फोन : ५६३९५२२



शुभश्री बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-१४, शंखधर चोक, फोन : ५६३९१९१



सुन्दर बचत तथा ऋण सहकारी संस्था लि.
मध्यपुर थिमि-३, सुन्दरनगर, फोन : ०१-६६३९१७४




चाणक्य कलेज अफ मेनेज्मेण्ट (+2, BBB, MBS)
CTL मोण्टेश्वरी - चाणक्य सेकेण्डरी स्कूल
मध्यपुर थिमि, शंखधर चोक, फोन : ६६३७१२६ (स्कूल), ६६३२९२७(कलेज)